# एउटा हिन्दूको प्रश्नको उत्तर

[ नेपाली - Nepali - نيبالي]



मुफ्ती

शैख मुहम्मद बिन सालेह अल् मुन्जिद



अनुवादक

अतीकुर्रहमान मु.इदरीस खान मक्की

# أي ديانة أفضل الإسلام أم الهندوسية؟



الشيخ
محمد بن صالح المنجد



المترجم
عتيق الرحمن محمد إدريس خان مكي

بسم الله الرحمن الرحيم






To connect Translator: 0501372254

للتواصل مع المترجم: 0501372254

अनुवादकसित सम्पर्क गर्ने नं. ०५०१३७२२५४

प्रथम प्रकाशन साल    सन् २०१६ ई. सं.

नि:शुल्क वितरणको लागि मात्र




## पुस्तक पाइने ठेगाना -:


*इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु नगरपालिका

व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)

सम्पर्क नं. ००९७७९८१९४३७७५८

सउदी नं. 00966-0501372254

*इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज सउदी अरबीया

प्रश्न: म मोरिशुश जुनकि हिन्द महासागरमा पर्छ त्यहाँबस्ने एउटा हिन्दू हूँ, कृपया मलाई बताउनुस् कि कुन धर्मचाहिँ श्रेष्ठ छ हिन्दूधर्म अथवा इस्लामधर्म ?

उत्तर: समस्त प्रकारका प्रशंसाहरू अल्लाहकै लागि छन् ।

सर्वश्रेष्ठ धर्म त्यो नै हो जुनु यस कुरालाई पुष्टि र प्रमाणित गर्नुमा सूक्ष्म होस् कि त्यो नै महान र पवित्र प्रतिपालकको मनोनीत धर्म हो, र त्यो नै त्यो महान धर्म हो जसबाट उहाँ राजी हुनुहुन्छ, र जसलाई समस्त मानवगणको पथप्रदर्शनको लागि अवतरित गरेका छन् जुन उनीहरूको संसारिक जीवनलाई सुखमय बनाओस् र परलौकिक जीवनमा सफलता र मुक्तीको जामानत देओस् ।

त पुष्टिकरण र प्रमाण यस्तो हुनुपर्छ जसमा मानिसहरूलाई कुनै प्रकारको शंका उपशंका नरहोस्, नत उनीहरू यस्तो भव्य प्रमाणलाई अस्वीकृत गर्नुमा वा त्यस जस्तो ल्याउनुमा नै सूक्ष्म होउन् । यसर्थ महान र पवित्र अल्लाह (ईश्वर) लाई

ती समस्त मिथ्या प्रमाणहरूबारे थाहा छ जुन मिथ्यावादीहरू अफ्नो मिथ्यारोपणलाई प्रमाणित गर्नुको लागि पेश गर्छन् ।

यसै कारण अल्लाहले आफ्नो सन्देष्टाहरूको यस्ता व्यापक र स्पष्ट चमत्कारहरूद्वारा सहायता गऱ्यो जुन चमत्कार मानिसहरू समक्ष यो छर्लङ्ग गरोस् कि वास्तवमा यस मानिसमाथि अल्लाहद्वारा वह्य ( प्रकाशना) गरिएको छ, अनि उनीहरू त्यसमा विश्वास गरेर त्यसको अनुशरणकारी बनुन् ।

त यस्तै प्रकारका चमत्कारहरूलाई लिएर इस्लामका सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम पनि आएका हुन्, र उहाँले प्रस्तुत गरेका चमत्कारहरू अति थुप्रै छन्, जसबारे ठुलठूला किताबहरू लेखिएका छन्, तर ती चमत्कारहरूमध्ये सर्वोत्कृष्ट चमत्कार यो पवित्र कुरआन हो, जसले समस्त अरबबासीहरूलाई यो हाँक दियो कि उनीहरू (यदि यसको ईश्वरीय हुनुमा सन्देह गर्छन् भने) यसै जस्तो उच्चकोटिको वाक्यरचना बनाएर ल्याउन्, किनकि यो कुरआन पूर्णतया चमत्कारी हुनुको साथै आफ्नो वाक्यशैलीमा पनि एउटा अनोठो चमत्कार

हो । यसर्थ कुरैशका महान र सर्वश्रेष्ठ भाषाविद्हरू पनि यस कुरआन जस्तो वाक्यशैलीको रचना गर्न सकेनन्, जबकि इतिहास यो वर्णन गर्छ कि उनीहरू भाषाशैलीको चर्मसीमासम्म पुगेका थिए । र यस पवित्र कुरआनमा वैज्ञानिक चमत्कारहरू पनि छन्, किनकि पवित्र कुरआन र हदीसका ग्रन्थहरूमा यस्ता यस्ता भविष्यका रिसर्च र घटनाहरू र वैज्ञानिक तथ्यहरूको वर्णन छ जसलाई त्यस युगमा कुनै पनि मानिसले बिना वह्यको सहायता लिइकन् ल्याउनु असम्भव थियो । र यसमा अदृश्यका कुराहरूलाई वर्णन गर्नुको पनि चमत्कार छ, किनकि यो विगतमा भएका र भविष्यमा आउनेहरूको इतिहासलाई वर्णन गर्छ, जबकि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम इतिहासको ज्ञानबाट अनभिज्ञ थिए, बरु ती देशहरूमा केही यदूदीहरू बाहेक जिनसित तिनीहरूको धर्मका केही अवशेष बाँकी थियो तिनी बाहेक कोही पनि इतिहासबोरे केही जान्दैन्थ्यो । र यस्तै यो पवित्र ग्रन्थ वैधानिकतामा त्यसलाई व्यवस्थित गर्नुमा पनि चमत्कारी छ, जुन आरम्भ गर्छ व्यक्तिगत शिष्टाचार र नैतिकताद्वारा, र

पारिवारिक समस्या र व्यक्तिको पारिवारिक समस्याको अवस्था र त्यसका समाधान, र अन्तर्राष्ट्रिय र सामाजिक सम्बन्धको व्यवस्थापनद्वारा, र मानवबीच स्वतन्त्रता न्याय निसाफका आधारहरूको स्थापना गर्छ, र संसार र परलोक एवं अदृश्यको अर्थलाई स्पष्ट गर्छ, र सौभाग्य र दुर्भाग्यको अर्थलाई पनि स्पष्ट पार्छ। र यी समस्त कुराहरू यस्तो मान्छेद्वारा निर्देशित गरिन्छ जुन निरक्षर छ, जुन पढ्न लेख्न जान्दैन, तर त्यसका मित्रहरूभन्दा पहिला नै त्यसका शत्रुहरू त्यसको धरोहरता र सत्यताको गवाही दिन्छन्। त यस पवित्र ग्रन्थ कुरआनले यस्तो विशाल इस्लामीय संस्कृतिको नीव हालेको छ जुन १४ शताब्दीभन्दा अधिक समयदेखि यस संसारमा फैलिएको छ।

र सर्वोत्कृष्ठ धर्म त्यो नै हुन्छ जुन यस्तो परिपूर्ण व्यवस्थापन गर्नुमा सूक्ष्म होस् जुन समस्त मानवगणलाई संसारिक प्रसन्नता र प्रशान्ति प्रदान गरोस्, किनकि धर्मको उद्देश्य नै प्रसन्नता प्रशान्तिको स्थापना गर्नु हो, र यसको स्थापना बिना अल्लाहको सहयाता र मार्गदर्शन पूर्ण हुनैसक्दैन, र

इस्लामका निर्देशनहरू चाहे ती आर्थिक र नीतिगत क्षेत्रसित सम्बन्धित होउन् वा सामाजिक पारिवारिक र आत्मिक क्षेत्रसित संलग्न होउन् सबै यसै प्रसन्नता र प्रशान्तिलाई स्थापित गर्नुको लागि हुन्, र जब यसलाई आरम्भिक कालका मुसलमानहरूले व्यवहारमा ल्याएका थिए त पूर्ण धरतीलाई न्याय निसाफ र शान्ति समृद्धिबाट पूर्ण गरिदिएका थिए, तर जब त्यसलाई छाडे त अल्लाहले पनि ती समस्त अनुग्रहहरूलाई उनीबाट खोस्यो जुन उनीहरूलाई त्यसको कारण प्रदान गरेको थियो ।

र सर्वोत्कृष्ट धर्म त्यो नै हो जुन समय र कालको आधारमा सबैभन्दा अन्त्यमा आयो, जुनकि आफूभन्दा पहिला आएका धर्महरूको पुष्टिकरण गर्छ, र केही ती निर्देशनहरूलाई स्थगित गर्छ जुन त्यस समय र युगका लागि त उपयुक्त थिए तर वर्तमानको लागि उपयुक्त छैनन्, र ती भविष्यवाणीहरूको पनि पुष्टि गर्छ जुन ती धर्महरूमा वर्णित छन्, जुन भविष्यवाणीहरूमध्ये यो पनि हो कि अन्तिम युगमा एउटा ईश्दूत आउनेछ र त्यसका विशेषताहरू र चिन्हहरू यस्ता यस्ता

हुन्छन् .. आदि । त कुरआनले हामीहरूलाई यो समाचार सुनाएको छ कि विगतका समस्त सन्देष्टाहरूले यो शुभसमाचार सुनाइसकेका छन् कि अन्तिम युगमा एउटा सन्देष्टा आउनेछ जसको नाम मुहम्मद हुनेछ, र जसद्वारा अल्लाह दूतत्वको समापन गर्नेछ। पवित्र कुरआनमा अल्लाहको भनाई छः

﴿ وَإِذۡ أَخَذَ ٱللَّهُ مِيثَٰقَ ٱلنَّبِيِّـۧنَ لَمَآ ءَاتَيۡتُكُم مِّن كِتَٰبٖ وَحِكۡمَةٖ ثُمَّ جَآءَكُمۡ رَسُولٞ مُّصَدِّقٞ لِّمَا مَعَكُمۡ لَتُؤۡمِنُنَّ بِهِۦ وَلَتَنصُرُنَّهُۥۚ قَالَ ءَأَقۡرَرۡتُمۡ وَأَخَذۡتُمۡ عَلَىٰ ذَٰلِكُمۡ إِصۡرِيۖ قَالُوٓاْ أَقۡرَرۡنَاۚ قَالَ فَٱشۡهَدُواْ وَأَنَا۠ مَعَكُم مِّنَ ٱلشَّٰهِدِينَ ﴿٨١﴾ ﴾ آل عمران: ٨١

अर्थ : जब अल्लाहले पैगम्बरहरूसँग वाचा गरायो कि जे जति मैले तिमीलाई किताब र ज्ञान प्रदान गर्दछु, अनि तिम्रो नजिकमा कुनै पैगम्बर (ईश्दूत)

आउँछ जसले तिम्रो किताबको पुष्टि गर्दछ त तिमीले अवश्य नै त्यसमाथि विश्वास गर्नुपर्दछ र उसको मद्दत गर्नु पर्नेछ। (वाचा लिएपछि) सोध्यो, के तिमीले वचन दियौ र यस वचन बद्धतामा मलाई संरक्षणको रूपमा ठहरायौ ?। तिनीहरूले भने (हो) हामीले वाचा गऱ्यौ । (अल्लाहले) भन्यो तिमीहरू साक्षी भइराख र म पनि तिम्रो साथमा साक्षी रहने छु। ( सूरतु आले इम्रान ८१ )

यसर्थ विगतका धर्महरूका ती अवशेषहरू जसमा कुनै प्रकारको थपघट गरिएको छैन त्यसमा हामी यस अन्तिम सन्देष्टाको शुभसमाचार पाउँछौं, यसर्थ तौरात र इन्जील यस्ता भविष्यावाणीहरूबाट पूरिएका छन्, तर त्यसलाई यहाँ वर्णन गर्नु हाम्रो लागि आवश्यक छैन बरु आवश्यक यो छ कि हामी त्यो वर्णन गरौं जुन हिन्दू धर्मका ग्रन्थहरूमा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको बारेमा स्पष्ट भविष्यवाणीहरू वर्णित छन् । त यी भविष्यवाणीहरूको ती ग्रन्थहरूमा हुने कुराले यो कदापि प्रमाणित गर्दैन कि ती ग्रन्थहरूमा जति कुराहरू छन् सबै सत्य र विश्वासनीय छन्, बरु

त्यसबाट यो प्रमाणित हुन्छ कि ती ग्रन्थहरूमा अहिले पनि केही सत्य कुराहरू छन् जुन विगतका युगहरूमा आएका सन्देष्टाहरूका अवशेषको रूपमा त्यसमा बाँकी छन् ।

र निम्नका उदधृतहरूलाई डा. मुहम्मद जियाउर्रहमान अल् आजमी ज्यूले आफ्नो किताब "ईसाई यहूदी र भारतीय धर्महरूको अध्ययन" को पे. (७०३-७४६) मा वर्णन गरेका छन्, र यस किताबको लेखक ज्यू भारतका नै बासी हुन्, र उहाँ हिन्दू धर्मका ती किताबहरूको पनि ज्ञानी हुन् जसको अनुवाद मेरो दृष्टिले अहिलेसम्म अरबी भाषामा भएको छैन ।

१ ⇒ "त्यस समयमा शम्बल नगरमा (प्रशान्त नगरमा) यस्तो मान्छेको घरमा कल्कि (पापमुक्त) जन्मन्छ जसको नाम विष्णुयाश (अब्दुल्लाह) हुन्छ, र जुन कोमल हृदय हुन्छ, र त्यो घर धर्मगुरुको घर

हुन्छ"* (भागवत पुराण स्कन्ध १२, अध्याय २, श्लोक १८ । र कल्कि पुराण अध्याय २, श्लोक ४)

र यो थाहा नै छ कि हाम्रो सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको पिताको नाम अब्दुल्लाह हो, र मक्का शहरलाई कुरआनमा प्रशान्त नगर भनिएको छ ।

२ ⇒ "कल्कि विष्णुयाशको घरमा त्यसको पत्नी सोमती (शान्तिवाली, आमेना) को कोखबाट जन्मन्छ ।"* (कल्कि पुराण २/११)

र यो ज्ञात नै छ कि हाम्रो सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमकी आमाको नाम आमेना (शान्तिवाली) थियो ।

---

* माथि वर्णन गरिएको अर्थको मूल श्लोकहरू निम्न हुन्:
"शम्भलग्राममुख्यस्य ब्रह्मणस्य महात्मनः ।
भवने विष्णुयशसः कल्किः प्रादुर्भविष्यति ॥" (भागवत पुराण १२/२/१८)
"शम्भले विष्णुयशसो गृहे प्रादुर्भवाम्यहम् ।" (कल्कि पुराण २/४) (अनुवादक)

* "सुमत्ययां विष्णुयशसा गर्भमाधत्त वैष्णवम् ।" (कल्कि पुराण २/११) (अनुवादक)

३ ⇒ "त्यो बैसाख महिनाको (अर्थात यस्तो महिना जुन मानसिहरू निकट प्रिय हुन्छ, र जसलाई अरबीमा रबीअ् भनिन्छ) १२ तारिखको चन्द्र जाहेर भए पश्चात जन्मन्छ ।"* (कल्कि पुराण २/१५)

र इतिहासका विद्हरूले यो वर्णन गरेका छन् कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम १२ रबीउल् अव्वलको दिन जन्मेका थिए, र यस कुरामा केही विद्हरूको मतभेद पनि छ ।

४ ⇒ "त्यो कल्कि आठ विशेषताहरूबाट विशिष्ट हुन्छः प्रज्ञाः* (परोक्षबारे खबर दिन्छ), कुलीनताः ( आफ्नो जातिको सर्वश्रेष्ठ वंशबाट हुन्छ), इन्द्रिय दमनः (आफूमाथि संयम राख्नेवाला हुन्छ), श्रुतिज्ञानः (त्यसतर्फ पह्य गरिन्छ, पराक्रमः (शक्तिशाली

---

* "द्वदश्यां शुक्लपक्षस्य माधवे माधवे मासि माधव्मः ।
जातो ददृशतुः पितरौ हृष्टमानसौ ॥ " (कल्कि पुराण २/१५) (अनुवादक)

* यो उद्धृतको टुक्रा भागवत पुराणको स्कन्ध १२ बाट लिइएको छ जसको श्लोक यस प्रकार छः
"अश्वमाशुगमरुहम् देवदत्तं जगत्पतिः ।
असिनासधुदमनमष्ऐश्वगुणानिवत ॥" (भागवत पुराण १२/२/१९)
अर्थातः विश्वको नायक जुन आठ ईश्वरीय विशेषताहरूद्वारा सुशोभित हुन्छ .... । (अनुवादक)

इन्द्रियवाला हुन्छ) दान: (दानवीर हुन्छ), अभुभाषिता: (कम कुरा गर्नेवाला) कृतज्ञता: (तत्वज्ञानी र आभारी) ।"*

त उपरोक्तमा वर्णित विशेषताहरू हाम्रो नबी मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममा भएका विशेषताहरूको केही अंश हुन् जसलाई समस्त अरबबासीहरू मान्दछन् चाहे उनी इस्लाम कबूल गरिसकेका होउन् वा आफ्नो नास्तिकतामा नै बाँकी होउन् ।

५ ⇒ "त्यो घोडाको सवारी गर्छ, र त्यसको प्रकाशमान सुन्दरता र प्रतापको कोही बराबरी गर्न सक्दैन, र त्यो खतना गरिएको हुन्छ, र लाखौं

* र यी विशेषताहरूलाई हिन्दूहरूको ग्रन्थ महाभारतबाट लिइएको छ जसको श्लोक यो हो:
"अष्टौ गुण: पुरुषं दीपयन्ति
प्रज्ञा च कौल्यं च दम: श्रुतं च ।
पराक्रमश्चबहुभाषिता च
दनां यथाशक्ति कृतज्ञता च ।" (महाभारत) यसलाई शैख सफीउर्रहमान मुबारकपूरीले आफ्नो किताब मुहम्मद स. हिन्दू ग्रन्थहरूमा को पे. ६१ म वर्णन गरेका छन् पीस फाउन्डेशनबाट १२ जून २०१२ मा प्रकाशित भएको संकलन । (अनुवादक)

अन्धकारमा भएका अधर्मी र नास्तिकहरूलाई कुल्चिने छ ।"* (भागवत पुराण १२/२/२०)

र खतना गर्नु हिन्दू धर्ममा छैन बरु यो इस्लामीय संस्कृतिमध्येको हो, जुन मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमका पुरुष अनुयायीहरूमाथि आवश्यक छ ।

६ ⇒ "आफ्ना चारवटा साथीहरूको सहायताले त्यो शैतानलाई नष्ट गर्छु । ... र स्वर्गदूतहरू युद्धहरूमा त्यसको सहायताको लागि अवतरित हुनेछन् ।"* (कल्कि पुराण २/५,७)

त रसूल सल्लल्लाहो अलैहे वसल्लम ती चार साथीहरू उहाँका सत्यनिष्ठ उत्तराधिकारीहरू हुन् जुन उनको निधन पश्चात सत्ता ग्रहण गरेका थिए, र इस्लामीय विद्हरूको यस कुरामा एकमत छ कि उनीहरू रसूल सल्लल्लाहो अलैहे वसल्लम पश्चात यस उम्मतका सर्वश्रेष्ठ मानिसहरू हुन् ।

---

* "विचरन्नाशुना क्षोणयां हयेना प्रतिमद्युतिः ।
नृतलिंगक्ष्छदो दस्यून्कोटिशोनिहानिष्यति ॥" (भागवत पुराण १२/२/२०) (अनुवादक)

* "चतुर्भिभ्रतिृर्भिर्देव करिष्यामि कलिक्षयम् ।" (कल्कि पुराण २/५)
" यात सूयं भुवं देवाः स्वांशावताणे रतः ।" (कल्कि पुराण २/७) (अनुवादक)

७ ⇒ "त्यो जन्मे पश्चात पर्वततिर जान्छ ताकि परशुराम (ठूलो गुरु) सित ज्ञान प्राप्त गरोस्, अनि उत्तरतिर प्रस्थान गर्छ, अनि आफ्नो जन्मस्थानतिर फर्केर आउँछ ।" (कल्कि पुराण)

त यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लम हिरा नामक गुफामा एकान्तमा बसिराख्थे यहाँसम्म कि हजरत जिब्रील उहाँमाथि वहेय लिएर अवतरित गरे, अनि उत्तरतिर अर्थात मदीना शहरतिर प्रवास गरेका थिए, अनि विजयता भएर मक्कातिर पुनः फर्केका थिए ।

⇒ ८ "र उनको शरीरबाट सुगन्ध नस्किन्छ जसबाट मानिसहरू मदमस्त भइहाल्छन्, र जब उहाँको शरीरलाई सपर्श गर्दै वायु गुज्रन्छ त वातावरण र आत्माहरूलाई सुगन्धले रमाइदिन्छ ।" (भागवत पुराण २१/२/२)*

---

* र भागवत पुरनण स्कन्ध १२ अध्याय २ श्लोक २१ म छः
"अथ तेषां भविष्यन्ति मनांसि विशदानि वै ।
वसुदेवांगरागतिपुरायगन्धनिलस्पृशाम् ॥" (भागवत पुराण १२/२/२१)
अर्थातः त्यसको शरीरबाट अत्यन्त रमाइलो सुगन्घ निस्कनेछ जुन वातावरणलाई सुगन्धित गरिदिन्छ र स्वभावमा स्वच्छता ल्याउँछ । (अनुवादक)

९ ⇒ "जसले प्रथम बलि गऱ्यो त्यो अहमद हो, अनि त्यो सूर्य झैं प्रकाशमान भयो" ।* (सामवेद २/६/८)

१० ⇒ "निकट भविष्यमा आत्मिक अध्यापक आफ्नो सम्मनित साथीहरूसंग आउनेछ, र त्यो महामदको नामले मानिसहरू बीच प्रख्यात हुन्छ, र अगुवा (राजा भोज) ले यो भन्दै त्यसको स्वागत गर्नेछन्: हे मरुस्थलको बासी, शैतानलाई पराजित गर्नेवाला, चमत्कारी, समस्त अवगुण र पापबाट पवित्र, सत्यतामा सुदृढ रहनेवाला, अल्लाहबारे सर्वोत्कृष्ट ज्ञानी, र त्यससित प्रेम गर्नेवाला तिमीमाथि शान्ति अवतरित होस्, म तिम्रो दास हूँ, र तिम्रो चरणमूनि आफ्नो जीवन व्यतीत गर्नेछु।"* (भविष्य पुराण ३/३/३/५-८)

---

* "अहमधि पितु: परिमेघापृतस्य जग्रह । अहं सूर्य इवाजनि ॥" ( सामेवेद २/६/८) (अनुवादक)

* "एतस्मिन्ननतरे म्लेच्छ आचार्य्येण समन्वित: ।
महामद इति ख्यात: शिप्यशाखासमन्वित: ॥
नृपश्चैय महादेवं मरुस्थलनिवासिनम् ॥
गंगाजलैश्च संस्नाप्य पंचगव्यसमन्वितै: ।
चंदनादिभिरम्यचर्य तुष्टाव मंसा हरम् ॥

११ ⇒ "र यस युगमा जब मनुष्यहरूको लागि सामूहिक भलाईको ज्ञानमार्फत सत्यताको लाभ जाहेर हुने् समय आउँछ, त मुहम्मदको आगमनले अंधकार नष्ट भइहाल्छ, र तत्वदर्शिताको प्रकाश टल्किन थाल्दछ ।"* (भागवत पुराण २/७६)

र यी उद्धृतहरू स्पष्टरूपले अहमद र मुहम्मद नामलाई स्पष्ट गरिरहेका छन् जुन रसूल सल्लल्लाहो अलैहे वसल्लमका नामहरूमध्येका हुन्, अल्लाहको पवित्र ग्रन्थ कुरआनमा भनाई छः

﴿ وَإِذۡ قَالَ عِيسَى ٱبۡنُ مَرۡيَمَ يَٰبَنِيٓ إِسۡرَٰٓءِيلَ إِنِّي رَسُولُ ٱللَّهِ إِلَيۡكُم مُّصَدِّقٗا لِّمَا بَيۡنَ يَدَيَّ مِنَ ٱلتَّوۡرَىٰةِ وَمُبَشِّرَۢا بِرَسُولٖ يَأۡتِي مِنۢ بَعۡدِي ٱسۡمُهُۥٓ أَحۡمَدُۖ ﴾ الصف: ٦

---

भोजराज उवाच नमस्ते गिरिजानाथ मूस्थलनिवासिने ।
त्रिपुरासुरनाशाय बहुमायाप्रवर्त्तिने ॥
म्लैच्छैर्गुप्ताय शुद्धाय सच्चिदानन्दरुपिणे ।
त्वां मां हि किंकरां विद्धि शरणार्थमुपागतम ॥" (भविष्य पुराण ३/३/३/५-८) (अनुवादक)

* "अत्रान हेतु कृत मोहमदान्व्कार नाशं ।
विधायं हि तदो दयते विवेकः ॥" (भागवत पुराण २/७६) (अनुवादक)

अर्थ : र जब मरियमको छोरा ईसाले भने: कि हे मेरो क़ौम। बनी इस्राईल ! म तिमी सबैको लागि अल्लाहबाट पठाइएको रसूल हूँ। मभन्दा पहिलेको किताब तौरातको म प्रमाणित गर्नेवाला छु र म पछि आउने एउटा संदेष्टा जसको नाम अहमद हुनेछ, उनको शुभागमनको शुभ-सन्देश सुनाउँछु। (सूरतुस्सफ्फ ६ )

१२ ⇒ "अग्नीदेवी स्पष्ट विधानवाली, हामीले तिमीलाई धरतीको बीचोबीच राखेका छौं, सामीप्यता प्रमप्त गर्नेहरूको लागि ।" (श्रृगवेद ४/३/२९)

१३ ⇒ र अथर्ववेद र श्रृगवेदका विभिन्न पृष्ठ र श्लोकहरूमा नराशंस (प्रशंसा गरिएको मान्छे) को भविष्यवाणी पाइन्छ, र त्यसको विशेषतालाई यसरी वर्णन गरिएको छ: त्यो धरतीमा बस्ने समस्त मानिसहरूभन्दा महान हुन्छ। त्यसको प्रकाश घर घरमा पुगिन्छ। मानिसहरूलाई दोष पापबाट मुक्त गर्नेछ। ऊँटको सवारी गर्छ। त्यससित १२ स्वास्नी हुन्छिन् ... । सुन हे मानवगण ! नि:सन्देह

नराशंसको गुणगान सर्वोच्च हुनेछ, र नराशंसको प्रशंसा गरिन्छ । र त्यो साठ हजार ९० को माझबाट प्रवास गर्छ .. । र त्यसलाई (मामेह) सय असली शुद्ध दीनार प्रदान गरिन्छ र दश तस्वीह र सय घोडाहरू पनि ।

र जीवनीका ग्रन्थहरूमा उहाँकी स्वास्नीहरूको संख्या १२ नै बताइएको छ जुन उपरोक्तका उद्धधृतमा वर्णित छ ।

१४ ⇒ "एउटा उच्चस्तरीय आचरण भएको सदाचारी मान्छे सिन्धको राजा राजा भोज समक्ष रात्रीको अन्धकारमा आयो, र भन्यो: हे राजा तिम्रो आर्य धर्म भारतका समस्त धर्महरूभन्दा श्रेष्ठ धर्म हो, तर सर्वश्रेष्ठ पूजनीयको आदेशले म त्यसको धर्मलाई प्रसारित गर्छु जुन समस्त पवित्र कुराहरूलाई खान्छ, त्यसको खतना गरिएको हुन्छ, र त्यसको टाउकोमा कपालको चोटी (जुडा) हुँदैन नत ढल्केको ननै उल्टिएको, तर त्यसको दाह्री लामो हुन्छ, र त्यो विशाल क्रान्तिकारी हुन्छ, र मानिसहरू बीच अजान भन्छ, र पवित्र कुराहरू सबै खान्छ तर

सुंगुरको मासु खाँदैन, र त्यसले ल्याएको धर्म समस्त धर्मलाई स्थगित गरिदिन्छ, र तिनीहरूलाई हामीले मुसलीको नाम दिएका छौं, र सर्वश्रेष्ठ पूजनीयले ( अल्लाहले) नै त्यसतर्फ यो धर्म अवतरित गरेका छन् ।"* (भविष्य पुराण ३/३/३/२३-२७)

त हामी भन्छौं कि अजान भन्नु र सुंगुरको मासुलाई वर्जित ठान्नु इस्लामीय विधानका प्रमुख विशेषतामध्येका हुन्, र यस धर्मका अनुयायीहरूलाई मुसलेमीन भनिन्छ नकि मुसली, तर दुवै शब्दमा अति निकट्ता छ र दुवैको मूल रचना शब्द एउटै हो ।

---

* " रात्रौ स देवरूपश्चबहुमायाविशारदः ।
पैशांच देहमास्याय भोजराजं हि सोवबीत् ॥
आयर्याधर्मी हि ते राजन्सर्वधर्मोत्तमः स्मृतः ।
ईशाज्ञया करिय्यामि पैशाचं धर्मदारुणम् ॥
लिंगच्छेदी शिखाहीनः श्मश्रुधारी स दूपकः ।
उच्चालापी सर्वमक्षी भविष्यति जना मम ॥
विना कौलां च पशवस्तेषां भक्ष्या भता मम ।
नुसलेनैव संस्कारः कुशैरिव भविष्यति ॥
तस्मान्मुसलवन्तो हि नातयो धर्मदूपकाः ।
इति पैशाचश्र्मश्च भविष्यति मया कृतः ॥" (भविष्य पुराण ३/३/३/२३-२७)
(अनुवादक)

र हामी तपाईंसित यो पनि भन्छौं किः हिन्दू धर्मका विद्हरूको कथन बमोजिम तपाईंलाई यो सहुलियत प्राप्त छ कि तपाई इस्लामीय सिद्धान्तमा पनि आस्था राख्न सक्नुहुन्छ, र त्यस धर्मका अनुयायी बन्न सक्नुहुनेछ जसलाई मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले ल्याएका छन्, किनकि हिन्दूधर्म ती विद्हरूको दृष्टिमा यस्तो धर्म हो जुन पक्षपातबाट मुक्त छ, र सत्यलाई खोजी गर्नुमा स्वतन्त्रता प्रदान गर्छ । यसर्थ तपाईको हिन्दू हुनाले कुनै फर्क पर्दैन, चाहे तपाई इस्लाम कबूल गर वा नगर, तर महत्वपूर्ण यो छ कि तपाई आफ्नो सत्यताको यस खोजलाई निरन्तर राख ।

भरतको महानायक गाँधी ज्यूको भनाई छः हिन्दूधर्मका विशेषताहरूमध्ये यो प्रमुख विशेषता हो कि यसको कुनै प्रमुख सिद्धान्त छैन, यसर्थ जब मसित यसबारे प्रश्न गरिन्छ त म भन्छुः यसको सिद्धान्त हो पक्षपात नगरिकन् सत्यको राम्ररी खोज गर्नु, र रह्यो कुरो स्रष्टा हुने नहुने सिद्धान्तको कुरो, त दुवै सिद्धान्त एकनास छन्, र कुनै पनि हिन्दूको लागि यो आवश्यक छैन कि त्यो स्रष्टामाथि आस्था

राखोस् भने मात्र त्यो हिन्दू हुन्सक्छ, बरु त्यो हिन्दू हो चाहे त्यसमाथि आस्था राखोस् वा नराखोस् ।

र गाँधी ज्यू यो पनि भन्छन्: हिन्दूधर्मको राम्रो विशेषताहरूमध्ये यो विशेषता पनि हो कि त्यो समस्त सिद्धान्तहरूबाट रिक्त छ, र यसको साथै अन्य धर्मका प्रमुख सिद्धान्त र मूल मर्मबाट सुसज्जित पनि छ । (हिन्दू धर्म, लेखक: महात्मा गाँधी) (मैले यसलाई डा. आजमीको किताब यहूदी ईसाई र भारतका धर्महरूको अध्ययनको पे. ५२९, ५३० बाट लिएको छु)

र अधिक ज्ञानको लागि उत्तर नं. (१२६४७२) लाई पनि हेर्नुहोस् ।

त तपाई आफ्नो यस खोजलाई इस्लाम धर्मको अध्ययन गर्ने, र यसका विशेषताहरूमाथि विचार गर्ने, र समस्त धर्महरू बीच यसका महानता र विशेषताहरूको खोज गर्ने माध्यम किन बनाउनु हुन्न, ताकि तपाईलाई यो थाहा होस् कि यो त्यो धर्म हो जसले समस्त धर्मलाई स्थगित गऱ्यो, र नबी मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम त्यो व्यक्ति

हुन जसको आगमनको भविष्यवाणी विगतका समस्त ईश्दूतहरूले गरेका छन्, र यो कुरो जति महान छ त्यति नै घातक पनि छ किनकि अल्लाहले उद्धारको मार्ग मात्र इस्लामलाई बताएको छ जुनकि एकेश्वरवादको धर्म हो । अल्लाहको कथन छ:

﴿ وَمَن يَبۡتَغِ غَيۡرَ ٱلۡإِسۡلَٰمِ دِينٗا فَلَن يُقۡبَلَ مِنۡهُ وَهُوَ فِي ٱلۡأٓخِرَةِ مِنَ ٱلۡخَٰسِرِينَ ٨٥ ﴾ آل عمران: ٨٥

अर्थ : जुन मानिस इस्लाम बाहेक कुनै अन्य धर्मको खोजी गर्दछ भने उसको धर्म स्वीकार गरिने छैन र उसले परलोकमा घाटामा पर्ने मध्येको हुनेछ । (सूरतु आले इम्रान ८५)

र अरु लाभदायक कुराहरूको अध्ययनको लागि उत्तर नं. (१७५३३९) लाई हेर्नुहोस् । र यसबारे अल्लाह नै अधिक ज्ञानवान छ ।

अन्तयमा अल्लाहसित यो विन्ती छ कि अल्लाह हामीलाई यस बहुमूल्य लेखद्वारा सत्यमार्गलाई अपनाउनुको सुअवसर प्रदानगरी हाम्रा विगतका

पापहरूलाई क्षमादान दिई स्वर्गमा प्रवेश पाउने भाग्यवानहरूमध्येको बनाइदेओस् (आमीन) ।

**अनुवादक**

**अतीकुर्रहमान मुहम्मद इदरीस खान मक्की**
**कपिलवस्तु नगरपालिका वार्ड नं. ९ महुवा**
**तौलिहवा कपिलवस्तु (नेपाल)**
email- atiqkhannp1982@yahoo.com
**सम्पर्क नं. ००९७७९८१९४३७७५८**
**सउदी मो. न. ००९६६५०१३७२२५४**